पञ्चविंशति साहस्रिकावाट उद्धृत

# निर्वेधभागीय

(सानुवाद)



सम्पादक

श्री पं. (स्व.) दिव्यवज्र वज्राचार्य

प्रकाशक : अप्सरा प्रकाशन

पञ्चविंशति साहस्रिकाबाट उद्धृत

# निर्वेधभागीय

(सानुवाद)

सम्पादक
श्री दिब्य बज्र बज्राचार्य

प्रकाशक :
अप्सरा प्रकाशन

दोश्रो संस्करण ८०० प्रति
पुस्तक दान
नेपाल संवत् ११२७ कछलागा चतुर्दशि
(विक्रम संवत् २०६३ माघ ८ गते)
मूल्य रु. १५।-
(पुस्तक विक्रबाट हुने रकमले पुनः पुस्तक प्रकाशन गर्ने उद्देश्य अखिल नेपाल महायान बौद्ध समाजको रहेको अवगत गराउन चाहन्छु ।)

छपाई
समाचार अफसेट प्रेस
असन, तक्षःबहाल
फोन : ४२२९५४७



जन्म : १०.०१ साउन

दिवंगत : २०६३ कार्तिक ९

दिवंगत श्रीमान् लक्ष्मणसुर्य वज्राचार्यप्रति

## समर्पण

श्रीमति तारादेवी वज्राचार्य

# दुई शब्द

"जन्म पछि मरण आउँछ" यो ध्रुवसत्य सबैमा लागू भए भैं मेरो श्रीमान लक्ष्मणसुर्य बज्राचार्यमा पनि लागू भयो । गत ०६३ साल कार्तिक नौ गते मृत्युसँग जुध्दाजुध्दै ७२ वर्षको उमेमा उहाँ देहान्त हुनुभयो । जीवनभर उहाँ सधैं आफ्नो परम्परा अनुसार बुद्ध धर्ममा आवद्ध रहेर जानुभयो । विशेषत बज्रयान धर्मलाई अगाडि बढाउन उहाँले आफ्नो क्षेत्रबाट सधैं नै सक्ने योगदान गर्नुभएको छ । साथै पारिवारिक र सामाजिक क्षेत्रमा उहाँ जहिले पनि हित्तचित्त भएर अगाडि लाग्नुभएको छ । यहि स्मरणमा आज उहाँको सम्भनामा पञ्चविंशति साहस्रिकाबाट उदृत *निर्वेधभागीय* नामक पुस्तक पुनः प्रकाशन गरेर पाठक समक्ष ल्याएको छु । उक्त पुस्तक पाठक समक्ष पुऱ्याउन प्रकाशकको भूमिका निर्वाह गरि अप्सरा प्रकाशनले गरेको सहयोगलाई धन्यबाद दिन चाहन्छु ।

साथै महायान बौद्ध समाजका अध्यक्ष सुमति बज्राचार्यले उक्त पुस्तक प्रकाशन गर्नका लागि गर्नुभएको सहयोगप्रति हार्दिक स-धन्यवाद दिन चाहन्छु । अन्तमा यसरी बौद्ध धर्मको पुस्तक समाज समक्ष पुऱ्याउन पूर्णरुपमा सहयोग गर्ने श्री अष्टमूनी बज्राचार्यलाई मुरी मुरी धन्यबाद दिन चाहन्छु ।

**श्रीमति तारादेवी बज्राचार्य**

ने.स. ११२७, पोहेला
वि.सं. २०६३ माघ

# पहिलो प्रकाशनको प्रस्तावना

महायानको मूलग्रन्थको रूपमा अष्टसाहस्रिका, पञ्चविंशतिसाहस्रिका तथा शतसाहस्रिका प्रसिद्ध छन् । संक्षिप्त रुचिका व्यक्तिहरूका निमित्त अष्टसाहस्रिका र मध्यरूचिका व्यक्तिहरूको निमित्त विंशतिसाहस्रिका तथा विस्तृत रुचिका व्यक्तिहरूका निमित्त शतसाहस्रिका भगवान् बुद्धले उपदेश गर्नुभएको हो । यी तीनै ग्रन्थको उदेश्य बुद्धत्व कसरी लाभ गर्ने भन्ने विषयमा प्रश्नोतरको रुपमा चर्चा गर्नु हो ।

यी तीनै ग्रन्थका वास्तविक अर्थ व्यक्त गर्न धेरै टीकाकारहरूले प्रयत्न गर्दै आएको कुरा हरिभद्रको अभिसमयालंकारालोक नामक अष्टसाहस्रिकाको टीकाबाट व्यक्त हुन्छ । हरिभद्रले आर्य मैत्रेयनाथको व्याखानलाई नै उत्तम मानी आर्यमैत्रेयनाथले लेखेको अभिसमयालंकार प्रज्ञापारमितोपदेशशास्त्रको अनुसरण गरेको छ ।

अभिसमयालंकार प्रज्ञापारमितोपदेश शास्त्रको अनुसार उपर्युक्त तीनै प्रज्ञापारमिताहरूमा सर्वाकारज्ञता, मार्गज्ञता, सर्वज्ञता, सर्वाकाराभिसंबोधि, मुर्धाभिसमय, अनुपूर्वाभिसमय, एकक्षाणभिसंबोधि, धर्मकाय, यी आठ विषयहरू छन् । सर्वाकारज्ञताको बोधिचित्तोत्पाद, अनववाद, चतुर्विधनि, वेंधभागीय महायान, प्रतिपत्याधार महायान, प्रतिपत्यालम्बन महायान, प्रतिपत्तिसमुद्देश, सन्नाहप्रतिपत्ति, प्रस्थानप्रतिपत्ति सम्भारप्रतिपत्ति, निर्याणप्रतिपत्ति यी दश विषयहरू हुन् । बुद्धत्व लाभ गर्न यी विषयहरू मध्ये सर्वप्रथम बोधिचित्तोपाद हो ।

"बुद्धो भवेयं हिताय" जगतको हित गर्न बुद्ध हुन सकुं भन्ने प्राणिधान (प्रार्थना) र प्रस्थान (कार्यारम्भ)को भेदले बोधिचित्त दुई प्रकारका हुन्छन् । यी बोधिचित्त नै जान्नुपर्ने उपदेश र शिक्षालाई अववाद भनिन्छ ।

यसरी दश प्रकारका अववादलाई राम्ररी बुझेपछि दुःखसत्य, समुदयसत्य, निरोधसत्य, मार्गसत्य, यी चार सत्यलाई प्रतिवेध (बुझ्न) योग्य चतुर्विध निर्वेधभागीयको भावना (अभ्यास) गरिन्छ । यही निर्वेधभागीय प्रस्तुत प्रकाशनको विषय हो ।

यहा पञ्चविंशति साहस्रिकाबाट संस्कृत अंश उद्धरण गरी सरल रूपमा अनुवाद प्रस्तुत गरिएको छ । यसमा उष्मगत भावना, मूर्धगत भावना, क्षान्ति भावना, अग्रधर्म भावनाका भेदले चार प्रकारका निर्वेधभागीय भावनाहरू

समाविष्ट छन् । यी भावनाहरू पनि क्रमशः गर्नुपर्ने हुनाले मृदु(नरम) मध्य( मझौला) अधिमात्र(बढिया)का भेदले प्रत्येक तीन प्रकारका भावना(अभ्यास) गर्ने तरिका उल्लेख गरिएका छन् । पहिले मृद उष्णगत भावना (अभ्यास) अनि मध्यउष्मगत त्यसपछि अधिमात्र उष्मगत भावना गर्ने विधि उल्लेख गरेका छन् ।

यसै गरी मृदु , मूर्धगत, मध्यमूर्धगत, अधिमूर्धगत भावना गर्ने कुरो उल्लेख गरिएको छ ।

अनि मृदु क्षान्ति, मध्य क्षान्ति अधिमात्र क्षान्ति भावना गर्ने विधिको उल्लेख छ ।

यस पछि मृदु अग्रधर्म, मध्य अग्रधर्म, अग्रधर्म भावना गर्ने विधि बताइएको छ । यसैलाई निर्वेधभागीय भनिन्छ । यी कुरा प्रस्तुत पुस्तकबाट व्यक्त हुन्छ । उदाहरणको निमित्त सर्वप्रथम गर्नुपर्ने मृदुउष्मगत भावना कसरी गर्ने भन्ने विधि तल प्रस्तुत गरिन्छ ।

म सुख चाहन्छु, त्यस्तै संपूर्ण सुख चाहन्छन् । मलाई रोग, चोटपटक लागेमा वा कुटेमा दुःख हुन्छ । त्यो दुःख म मन पराउन्न । त्यस्तै सबै प्राणी त्यस्ता दुःख मन पराउँदैनन् । मलाई खान लाउन मन पर्छ, त्यस्तै अरुलाई पनि खान लाउन मन पर्छ । मेरो धन, सम्पत्ति, पत्नी आदि अपहरण गरेमा मलाई दुःख लाग्छ । त्यस्तै अरुलाई दुःख लाग्ला । मलाई अरुले गालिगलोज गरेको मन पर्दैन । त्यस्तै अरुलाई पनि मन पर्नेछैन ।

जाड रक्सी आदि मादक पदार्थ खाई जथाभावी गरी हिँडेको र बोलेको मलाई मन पर्दैन, त्यस्तै अरुलाई पनि मन पर्दैन होला । यसकारण सबै प्राणीहरू "म" समान हुन् । अतः सबै प्राणीको भलाई होस्, निरोगी होउन्, सुखी होउन्, उनीहरूको हित होस्, उनीहरूलाई बाधा तकलीफ नहोस्, उनीहरूको अपमान नहोस् भनी समानताको व्यवहार गर्ने अभ्यासलाई मृदुउष्मगत भावना भनिन्छ ।

यो भावनाले सबै अकुशल भस्म गर्ने हुँदा उष्मगत (मन्द अग्नि) जस्तो कुशलमूल भनिएको हो ।

अतः सबै प्राणीको भलाई गरुं उपकार गरुं भन्ने बोधिसत्वले कुनै धर्म संप्रदाय कुनै व्यक्तिको भेदभाव नराखी धेरै काल समता भावना गर्नु उचित छ । त्यस पछि स्वतः अग्रधर्मसम्मको भावना गर्ने क्षमता उत्पन्न हुनेछ ।

उपयुक्त चार प्रकारको निर्वेधभागीयमा उल्लेख भएका परिभाषिक शब्दहरूको अर्थ धर्मसंग्रहबाट नेपालीमा अनुवाद गरी राखिएको छ । यसबाट पाठकहरूलाई सुविधा हुने नै छ ।

श्रद्धालु व्यक्तिलाई पाठ गर्न सुविधा होस् भन्ने उद्देश्यले पञ्चविंशति

साहस्रिका प्रज्ञापारमिताको मूल भाग पनि प्रकाशन गरिएको छ।
यो पुस्तक प्रकाशन गर्ने अभिभारा अखिल नेपाल महायान बौद्ध समाजले लिई दिएकोमा सो संस्थालाई सस्तो धन्यवाद मात्र होइन धेरै धेरै साधुवाद दिन चाहन्छु।
अन्तमा यो पुस्तकको रूपरेखा तयार पार्न मेरो विचार अनुसार लेखी साफी गरिदिएकोमा श्रीमती सुमती बैद्यलाई हार्दिक शुभकामना दिन्छु।

सम्पादकः

पं दिब्यवज्र बज्राचर्य (स्व.)

# पञ्चविंशति साहास्रिकाबाट उध्दृत निर्वेधभागीय

पृष्ठ २६४-२६७

अथ खल्वायुष्मानन् सुभुतिर्भगवन्तमेतदवोचत् । निर्यातुकामेन भगवान बोधिसत्वेन महासत्वेनानुत्तरायां समयक सम्बोधौ कथंस्थातव्यम । भगवान आह- इह सुभुते बोधिसत्वेनानुत्तराम् सम्यक् सम्बोधिमिसम्बोद्धु कामेन सत्वानामन्तिके समम चित्तमुत्पादयितव्यम नं विषम चित्तमुत्पादयितव्यम् विषम चित्तमुत्पाद- यितव्यम् । सर्वत्वाःसमचि तेनालम्बितव्याः । सर्वसत्वानामन्तिके महामैत्र्युत्पादयितव्याः । सर्वसत्वेगु महांकरुणोत्पादयितव्याः सर्वसत्वामैत्र्येण चित्तेना लम्बितव्याः । सर्वसत्वाः महाकरुणाचित्तेनालम्बितव्याः । नपरुषचित्तेनालम्बितव्याः । सर्वसत्वानामन्तिके निहतमा नोत्पायितव्याः । सर्वसत्वाश्च निशाठ्येनालम्बितव्याः ।इतिमृदु उष्मगतम्

सर्वसत्वानामन्तिके हितचित्तोत्पादयितव्याः । अहित चित्त नोत्पायितव्यम् । सर्वसत्वाश्च हितचित्तेनालम्बितव्या नाहित चेत्तनालम्बितव्याः । सर्वसत्वानामन्तिकेऽ प्रतिहतं चित्तमुत्पादयितव्यम् । सर्वसत्वानप्रतिहितचित्ते नालम्बितव्याः । सर्वसत्वानामन्तिक अविहेठनाचित्तमुत्पादयितव्यम् । सर्वसत्वानविहठना चित्तेनालम्बितव्या इति मध्यमुष्मगतम् ।

सर्वसत्वानामन्तिकै मातृचित्तमुत्पादतिव्यम् पितृचेत्तमुत्पायितव्यम भ्रातृचित्तमुत्पादयितव्यम् भगिनीचित्तमुत्पादयितव्यम् पुत्राचित्तमुत्पायितव्यम दुहित्रीचित्तमुत्पादयितव्य् मित्रामात्यज्ञातिसालोहितचित्तमुत्पायितव्यम् । सर्व सत्वाश्च मातृचित्तेन पितृचित्तेनालम्वितव्या भातृचित्तेन भगिनीचित्तेनालम्बितव्या पुत्राचित्तेन दुहित्रीचित्ते नाम्बितव्यामित्रामात्यत्रातिसालोहितचित्तं नालम्बितव्याः । एवं खलुसुभुते बोधिसत्वेन महासत्वेनानुत्तरायां सम्यक सम्बोधौ निर्यातुकामेन स्थातव्यम् । इत्यधि मात्रमुष्मगतम् ।

आत्मना च प्राणातिपातत् प्रतिविरतैन भवितव्यम् । परे च प्राणितपातवैरमण्ये समादापयितव्याः । प्राणातिपात ब्रिरतेश्च वर्णवादिना भवितव्यं । ये चान्ये प्राणतिपातात्प्रतिविरता भवन्ति तेषां च वर्णवादिना भवितव्यम् समनुज्ञेन । एवं बोधिसत्वेन महासत्वेनानुत्तरायां सम्यक सम्बोधौ निर्यातुकामेन स्थातव्यम् ।

आत्मना चादत्तादानात्प्रतिविरतेन भवितव्यम् ।परे चादत्ततादान वैरमण्य समादीपतिव्या: । अदत्तादानविरतेश्च वर्णवादिना भवितव्यम् । ये चान्वे अदत्तादानात्वप्रतिविरता भवन्ति तेषां च वर्णवादिना भवितव्यम् समनुज्ञेन । एवं बोधिसत्वेनमहासत्वेनानुत्तरायां सम्यक् सम्बोधौ नियातुकामे स्थातव्यम् ।

आत्मना चा दत्तादानात्प्रतिविरतेन भवितव्यम् । परे चा दत्तादान वैरमण्य समादापयितव्या: अदत्तादानविरनेश्च वर्ण वादिना भवितव्यम् ।ये चान्ये अदत्तादानात्प्रतिविरता भवन्ति तेषां च वर्णवादिना भवितव्यम् समनुज्ञेन ।

एवमनृतवचनात् परुषवचनादवछप्रलापाभिध्याया व्यापादादात्मनाच मिथ्या दृष्टै प्रतिविरतेन भवितव्म् । परेच मिथ्यादुष्टिविरतौ समादापयितब्या : । मिथ्या दृष्टि विरते वर्णबादिना भवितब्यं समनुज्ञेन ।

आत्मना च प्रथमं ध्यानं समापत्तब्यम् । परेच प्रथमध्याने समादापयितब्या: । प्रथमध्यान समापत्तेश्व वर्णवादिना भवितब्यम् । ये चान्ये प्रथमं ध्यानं समापद्यन्ते तेषां च वर्णवादिना भवितब्यम् समनुज्ञेन ।

आत्मना च काममिथ्याचारात्प्रतिविरतेन भवितव्यम् । परे च काममिथ्याचारविरतौ समादापयितव्या: काममिथ्याचार विरते वर्णवादिना भवितव्यम् । ये चान्ये काममिथ्याचारात्प्रतिविरता भवन्ति तेषाञ्च वर्णवादिना भवितव्यं समनुज्ञेन ।

एवमनृतचनात् परुषचनादवद्धप्रलापा भिध्याया व्यापादात्मनाच मिथ्यष दृष्टै प्रतिविरतेन भवितव्यम् । परेच मिथ्यादृष्टिविरतौ समादापयितव्या: । मिथ्यादृष्टिविरते वर्णवादिना भवितव्यम् । येचान्ये मिथ्यादृष्टेश्च विरता भविन्ति तेषाञ्च वर्णवादिना भवितव्यं समनुज्ञेन ।

आतमना च प्रथमं ध्यानं समापत्तव्यम् । परेच प्रथमध्याने समादापयितब्या: । प्रथमध्यान समापत्तेश्च वर्णवादिना भवितव्यम् । ये चान्ये प्रथमं ध्यानं समापद्यन्ते तेषां वर्णवादिना भवितव्यम् समनुज्ञेन ।

आत्माना च द्वितीयं ध्यानं समापत्तव्ययम् एवं तृतीयं ध्यानं समापत्तब्यम् । आत्मना च चतुर्थ धयानं समापत्तब्यम् । परेचचतुर्थध्याने समादापयितव्या: । चतुर्थ ध्यानं समापत्तेश्च वर्णवादिना भवितब्वयम् । ये चान्ये चतुर्थ ध्यानं समापद्येन्ते तेषान्त वर्णवादिना भवितव्यम् समनुज्ञेन ।

आत्मा व मैत्री भावयितव्या परे च मैत्री भावनायां समादापयितब्या: । मैभावनायाश्च वर्णवादीना भवितव्यम् ये चान्ये मैत्री विहारिणस्तेषामपि वर्णवादिना भवितव्यं समनुज्ञेन ।

एवं करुणायां मुदितायाञ्च कर्तव्यम् । आत्मनाचोपेक्षा विहारिणा भवितव्यं परेश्चोपेक्षाविहारे समादपयितब्या: ।
उपेक्षा विहारस्य च वर्णवादिना भवितब्यम् । येचान्यै उपेक्षा विरहारिण तेषामपि

वर्णवादिना भवितव्यं समनुज्ञेन ।

आत्मना च आकाशान्त्यायतन समापत्ति समापत्तव्याः । परे च आकाशानन्त्यायतन समापत्तौ समादापयितव्याः । आकाशानन्त्यायतन समापत्तेश्च वर्णवादिना भवितव्यम् । ये चान्ये आकाशान्त्यायतन समापत्तिं समाद्येन्ते तेषाञ्च वर्णवादिना भवितव्यम् समनुज्ञेन ।

एवं विज्ञानान्त्यायतन समापत्ति आर्किचन्यायतन समापत्तिश्च । आत्मानाश्च नैवसंज्ञानायतन समापत्ति समापत्तव्या । परे च नैवसंज्ञानासंज्ञाययतन समादापवितव्याः । ये चान्ये नैवसंज्ञानायतनसमापत्ति समापद्येन्त तेषाञ्च वर्णवादिना भवितव्यं समनुज्ञेन ।

इति मृदु मूर्धगतम् ।

आत्मनाच दानपामित्ता पुररियतव्या परे च दानपारमितायां समादापयितव्याः । दानपारमितांयाश्च वर्णवादिना भवितव्यम् । ये चान्ये दानपारमितां परिपुरयन्ति, तेषाञ्च वणवादिना भवितव्यम् समनुज्ञेन । एवं शीलपारमिता क्षान्तिपारमिता, वीर्यपारमिता, ध्यानपारमिता ।

आत्मा च प्रज्ञापारमितापुरयितव्या परे च प्रज्ञापारमितायां समादापयितव्याः । प्रज्ञापारमितायाश्च वर्णवादिना भवितव्यम् । ये चान्ये प्रज्ञापारमितां पुरयन्ति तेषाञ्च वर्णवादिना भवितव्यम् समनुज्ञेन । इति मध्यमुर्धगतम् ।

आत्मना च अध्यात्मशुन्यता भावयितव्याः परेचा ध्यात्मशून्यताया समादापयितव्याः । अध्यात्मशून्यतायाश्च वर्णवादिना भवितव्यम् । ये चान्ये सत्वाआध्यात्मशून्यताम् भावयन्ति तेषां चं वर्णवादिना भवितव्यं समनुज्ञेन । एवं वहिर्धाशून्यता, अध्यात्मबहिधा शून्यता यावत आत्मनाश्च अभाव स्वभाव शून्यता भावयितबयाः परे चाभाव स्वभावशुन्यतायां समादापयितव्याः अभाव स्वभाव शून्यतायाश्च वर्णवादिना भवितव्यम् । ये चान्ये सत्वा अभावस्वभावशुन्यतां भावयन्ति तेषां च वर्णवादिना भवितव्यम् समनुज्ञेन ।

आत्मना च चत्वारि स्मृत्युपस्थानानि भावयितव्यानि । परे च चतुर्सु स्मृत्युपस्थानेषु समादापयितव्याः चतुर्णां स्मृत्युपस्थानानां वर्णवादिना भवितव्यम् । ये चान्ये सत्वाश्चत्बारि स्मृत्युपस्थानानि भावयन्ति तेषां च वर्णवादिना भवितव्यम् समनुज्ञेन । एवं सम्यक्प्रहाणेर्द्धिपादेन्द्रियवलबोध्यंगानि ।

आत्मनाचार्याष्टांगो मार्गोभावयितव्यः परे चार्याष्ङ्गे मार्गे स्थापयितव्याः । आर्याष्टाङ्ग मार्गस्य च वर्णवादिना भवितव्यम् । ये चान्ये सत्वा आर्याष्टाङ्ग मार्ग भावयन्ति तेषां च वर्णवादिना भवितव्यं समनुज्ञेन ।

आत्मना च शुन्यतानिमित्ताप्रणिहितसमाधयो भावयितव्याः । परे च शुन्यतानिमित्ताप्रणिहितसमाधौ समादापयितव्याः । शुन्यता निमित्ताप्रणिहित

समाधिनां च वर्णवादिना भवितव्यम् । ये चान्ये सत्वाः शुन्यतानिमित्ताप्रणिहित समाधीन भावयन्ति तेषाञ्च वर्णवादिना भवितव्यम् समनुज्ञेन ।

आत्मना च चत्वार्यार्यसत्यानि भावयितव्यानिपरे चार्यसत्य भावनाया समादापयितव्याः । आर्यसत्यानां च वर्णवादिना भवितव्यम् ।ये चान्ये सत्वाआर्यसत्यानि भावयन्ति तेषांञ्च वर्णवादिना भवितव्यम् समनुज्ञेन ।

आत्मानाश्चष्टविमोक्षा भावयितव्याः परे च अष्ट विमोक्ष भावनायां समादापयितव्याः । अष्टानाश्च विमोक्षानां वर्णवादिना भवितव्यम् ये चान्ये अष्टविमोक्षान् समापद्यन्ते तेषाञ्च वर्णवादिना भवितव्यम् समनुज्ञेन ।

आत्मना च नवानुपूर्वविहारसमापत्तयः समापत्तव्याः । परे च नवानुपूर्वविहारसमापत्तिसु समादापयितव्या नवानुपूर्वसमापत्तिनां वर्णवादिना भवितव्यम् । ये चान्ये सत्वा नवानुपूर्वविहार समापत्तिः समापद्यन्ते तेपाञ्च वर्णवादिना भवितव्यम् समनुज्ञेन ।

।

आत्मना च अभिज्ञा निष्पादयितव्यः । परे च अभिज्ञाप्राप्ते समादापयितव्याः । अभिज्ञानाश्च वर्णवादिना भवितव्यम् । ये चान्ये सत्वा अभिज्ञा प्रतिलब्धासत्तेषाञ्च वर्णवादिना भवितव्यम् समनुज्ञेन ।

आत्मना च दशतथागत बलानिपुरयितव्यानि । परे च दशतथागतवलेपु समादापयितव्याः । दशानाञ्च तथागत बलानां वर्णवादिना भवितव्यम् । ये चान्ये सत्वा दशतथागतबलानि परिपुरयन्ति तेषां च वर्णवादिना भवितव्यम् समनुज्ञेन एवं चत्वारि वैशारद्यानि चतस्रः प्रतिसंविदः ।

आत्मनाचाष्टादश आवेणिक बुद्ध धर्माः परिपुरयितव्याः परे च अष्टादश आवेणिक बुद्ध धर्मेपु प्रतिस्थापयितव्याः । अष्टादश आवेणिक बुद्ध धर्माणा वर्णवादिना भवितव्यम् । ये चान्ये आवेणिक बुद्ध धर्मान् परिपुरयन्ति तेपा ञ्च वर्णवादिना भवितव्यं समनुज्ञेन

आत्मना च महामैत्री महाकरुणा परिपुरयितव्या परे च महामैत्र्यां च समादापयितव्याः । महामैत्रया महाकरुणायाश्चवणर्ववादिना भवितव्यम् । ये चान्ये महामैत्रीं महाकरुणाञ्च परिपुरयन्ति तेपा च वर्णवादिना भवितव्यम् समनुज्ञेन ।

आत्मना चानुलोमप्रतिलामतिलोसमापत्तिं समापद्यन्ते तेपा च वर्णवादिना भवितव्यं समनुज्ञेन । एवं खलुगुभुने वोधिसत्वेन महासत्वेनानुत्तरायपं सम्यक सम्बोधौ नियांतु कामेन सथातव्यम । इति अधिमात्रमूर्धगतम् ।

आत्मना दुःखपरिजानाति समुदयञ्च प्रजहाति निरोधञ्च साक्षात् करोति, मार्गश्च भावयति, पराश्च दुःखपरित्रायै समुलय प्रहाणाय साक्षात क्रियायै मार्गभावनायै समादापयति । दुःखपरिज्ञानस्य समुदयप्रहाणस्य निरोध

साक्षात्क्रियाया मार्गभावनायाश्च वर्ण भाषते । ये चान्ये दुःख प्रजानन्ति समुदय प्रजहाति, निरोध साक्षात् कुर्वन्ति, मार्गञ्च भावयन्ति तेषां वर्णवादिना भवति समनुज्ञेन । इति मृद्वीक्षान्ति ।

आत्मनाच स्रोतापत्तिफलसाक्षात् क्रियायै ज्ञानमुत्पादयति नं च भूतकोटिम् साक्षात् करोति । पराञ्च स्रोतापत्तिफल ज्ञानसाक्षात् क्रियायै समादापयति । स्रोतापत्तिफल ज्ञान साक्षात् क्रियायानश्च वर्णं भाषते । ये चान्ये स्रोतापत्तिफल साक्षात्क्रियायै ज्ञानमुत्पादयन्ति तेषाञ्च वर्णवादी भवति समनुज्ञः ।

एवमात्मानाच सकृदागामिफलसाक्षात्क्रियायै ज्ञानमुत्पादयति न च भूटकोटिं साक्षात्कराति । आत्मना चानागामिफलसाक्षात्क्रियायै ज्ञानमुत्पादयति न च भूतकोटिं साक्षात्करोति ।

आत्मनाचर्हतत्वसाक्षात् क्रियायै ज्ञानमुत्पादयति न च भूतकोटिं साक्षात् करोति । पराञ्चार्हतत्वफलज्ञानसाक्षात् क्रियायां प्रतिस्थापयति । अर्हतत्वफलसाक्षात् क्रियायाश्च वर्ण भाषते । ये चान्येऽर्हत्वफलसाक्षात् क्रियायै ज्ञानमुत्पादयन्ति तेषाञ्च वर्णवादी भवति समनुज्ञः ।

आत्मना च प्रत्येकबुद्धफलसाक्षात् क्रियायै ज्ञानमुत्पादयति न च प्रत्येकबुद्धफलसाक्षात्क्रियां साक्षात् करोति । पराञ्च प्रत्येकबुद्धफलज्ञानसाक्षात्क्रियायां प्रतिष्ठापयति । प्रत्येकबुद्धफलज्ञानसाक्षात्क्रियायाश्च वर्णं भाषते । ये चान्ये प्रत्येकबुद्धफलसाक्षात्क्रियायै ज्ञानमुत्पादयन्ति तेषांञ्च वर्णवादी भवति समनुज्ञः । इति मध्याक्षान्ति ।

आत्मना च बोधिसत्वन्यामवक्रामति पराञ्च बोधिसत्वन्यामावक्रान्त्यां समादापयति । बोधिसत्वन्यामाावक्रान्तेश्च वर्णं भाषते । ये चान्ये बोधिसत्वन्यामावक्रामन्ति तेषां वर्णवादी भवति समनुज्ञः ।

एवं खलु सुभूते बोधिसत्वेनमहासत्वेनानुत्तरायां सम्यक सम्बोधौ निर्यातु कामेन स्थातव्यम इति अधिमात्राक्षान्ति ।

आत्मनाच सत्वान परिपाचयति पराश्च सत्व परिपाकाय समादापयति सत्व परिपाकस्य च वर्ण भाषते । ये चान्ये सत्वपरिपाकायाभ्युग्दता स्तोषाञ्च वर्णवादी भवति समनुज्ञः ।

आत्मनाच बुद्धक्षेत्रं परिशोधयति । पराञ्च बुद्ध क्षेत्र परिशोधनाय समदापयति । बुद्ध क्षेत्रपरिशुद्धेश्च वर्ण भाषते । ये चान्ये बुद्धक्षेत्रपरिशोधनाय प्रतिष्ठितास्तेषाञ्च वर्णवादी भवति समनुज्ञः । इति मृद्वीऽग्रधर्मा

आत्मना च बोधिसत्वाभिज्ञा उत्पादयति पराञ्च बोधिसत्वाभिज्ञासु समादापयति । बोधिसत्वाभिज्ञानां च वर्ण भाषते । ये चान्ये बोधिसत्वाभिज्ञा

भाबयन्ति तेषाञ्च वर्णवादी भवति समनुज्ञः । इति मध्याग्रधर्माः ।

आत्मना च सर्वकारज्ञताज्ञानमुत्पादयति । पराञ्च सर्वाकारज्ञताज्ञाने समादापयति । सर्वाकारज्ञताज्ञानस्य च वर्णं भाषते । ये चान्ये सर्वाकारज्ञताज्ञानमुत्पादयन्ति तेषाञ्च वर्णवादी भवति समनुज्ञः ।

आत्मना च सर्वबासनानुसन्धिक्लेशान् प्रजहाति । पराञ्च सर्ववासनानुसन्धिक्लेश प्रहाणतायै समादापयति । सर्ववासनानुसन्धिक्लेशप्रहाणस्यः च वर्ण भाषते । ये चान्ये सर्वबासनानुसन्धिक्लेशान् प्रजहति तेषाञ्च वर्णवादी भवति समनुज्ञः ।

आत्मना च आयुः सम्पदं परि गृन्हाति पराञ्चायु सम्पदिसमादापयति । आयुः सम्पदेश्च वर्ण भाषते । ये चान्ये महापुरुषा आयुः सम्पदि स्थिता स्तेषाञ्च वर्णवादी भवति समनुज्ञः ।

आत्मना च सद्धर्मस्थिति परिगृन्हाति । पराञ्च सद्धर्मस्थितौ समादापयति । सद्धर्मस्थितेश्च वणवादी भवति । ये चान्ये सद्धर्मस्थिति परिगृन्हन्ति तेषाञ्च महापुरुषर्षभानां वर्णवादी भवति समनुज्ञः ।

एवं खलु सुभूते बोधिसत्वेनमहासत्वेनानुत्तरायां सम्यक्सन्बौधौ निर्यातुकामेन भवितव्यं । एवं खलु सुभूते बोधिसत्वेन महासत्वेन प्रज्ञापारमितायां उपायकौशल्ये च स्थातव्यतस्यैव शिक्षमणिस्यैव तिष्ठतोऽनावरणं रुपं भविष्यति,अनावरणां बेदनाऽनावरणासंज्ञाऽनावरणाः संस्काराऽनावरण विज्ञानं भवति एवं विस्तरेण यावदनावरणा सद्धर्मस्थितिर्भविष्यति । तद् कस्यहेतोस्ताथाहि सुभुते बोधिसत्वेन महासत्वेनपूर्वान्तत श्रैवं रुपं नगृहीतं नवेदना, नसंज्ञा, नसंस्कारा, नविज्ञानं परिगृहीत एवं यावत सर्वाकारज्ञता सपरिगृहिता तद कस्यहेतोस्तथाहि सुभूते यो रूपास्याप्रतिग्रहो नतद रूपम् । या वेदना या संज्ञाया संस्कराणां तथाहि यो विज्ञानस्यापरिग्रहो नतद् विज्ञानमेवं यावत् यः सर्वाकारज्ञताया अपरिग्रहो नसा सर्वाकारज्ञताः । अस्मिन् खलु पुनबोधिसत्वस्थाने भाप्यमाने द्वयोर्बोधिसत्व सहस्रयोरनुपत्तिकेषु धर्मेसु क्षान्ति प्रतिलम्भोभूत् । इत्यधिमात्राग्रधर्मा । इत्युक निर्वेधमागीयं ।

बोधिसत्व महासत्वले अनुत्तर सम्यक सम्बोधिमा कसरी रहनुपर्दछ भनी आयुष्मान सुभूतिले भगवानलाई सोध्दा भगवानले यसरी आज्ञा भयो - "हे सुभूति यस अनुत्तर सम्यक सम्बोधि प्राप्त गर्न चाहने बोधिसत्वले सम्पूर्ण प्राणीसँग समान व्यवहार गर्नुपर्दछ। सबै प्राणीलाई समान सम्झनुपर्दछ। विषम अर्थात यो प्रिय यो अप्रियको भाव उत्पन्न गर्नुहुँदैन।

सबै प्राणीलाई समान चित्तले हेर्नुपर्दछ। प्राणी मात्रको अगाडि महान् मैत्री चित्त उत्पन्न गर्नुपर्दछ। सम्पूर्ण प्राणीमा करुणा राख्नुपर्दछ। प्राणी मात्रलाई मैत्रीपूर्ण व्यवहार गर्नुपर्दछ। प्राणीहरुमा मात्र करुणा चित्त उत्पन्न गर्नुपर्दछ। प्राणीहरूलाई महाकरुणा चित्तले हेर्नुपर्दछ। क्रूर चित्तले हेर्नुहुँदैन। कुनै प्राणीको अगाडि अभिमान गर्नुहुँदैन। सबै प्राणीहरू उपर निष्कपट व्यवहार गर्नुपर्दछ। (यस्तो व्यवहार गर्नुलाई मृदुउष्मगत भनिन्छ॥

सबै प्राणीहरू उपर हितचित्त उत्पन्न गर्नुपर्दछ। अहित चित्त अर्थात् कसैलाई बिगार्ने विचार लिनहुँदैन। सबै प्राणीउपर हितचित्तले व्यवहार गर्नुपर्दछ। अहित चित्तले व्यवहार गर्नुहुँदैन। प्राणी मात्रमा अप्रतिहत(विरोध गर्ने भाव) उत्पन्न गर्नुहुँदैन। अप्रतिहित चित्तले व्यवहार गर्नुपर्दछ। सबै प्राणीलाई दबाउने चित्त उत्पन्न गर्नुहुँदैन। सबै प्राणीलाई दबाउने भाव नराखिकन सम्मानपूर्वक व्यवहार गर्नु पर्छ

(यस्तो व्यवहार गर्नुलाई मध्य उष्मगत भनिन्छ।)

आमा बाबु, भाइ, बहिनी, छोरा, छोरी मित्र अमात्य र आफ्नै रगतका दाजुभाइ प्रति हाम्रो जुन चित्त उत्पन्न हुन्छ त्यस्तै चित्त सबै प्राणीहरूमा उत्पन्न गर्नुपर्दछ। अर्थात् सबै प्राणीलाई आफन्त ठान्नुपर्छ। आमा, बाबु, दाजु भाइ, बहिनी, छोरा छोरी, मित्र अमात्य र आफ्नै रगतका दाजुभाईलाई जस्तै अरु सम्पूर्ण प्राणीलाई पनि व्यवहार गर्नुपर्दछ। अनुत्तर सम्यक सम्बोधिमा बस्ने बोधिसत्वले यही व्यवहार गर्नु पर्दछ।

(यस्तो व्यवहारमा रहनुलाई अधिमात्र उष्मगत् भनिन्छ।

आफूले पनि प्राणातिपात नगर्नु, अरुलाई पनि प्राणातिपात नगर्ने सल्लाह दिनुपर्दछ। प्राणातिपात नगर्नु असल हो भनी सहाहना गर्नुपर्छ। अरु पनि प्राणातिपात नगर्ने व्यक्तिहरूको अनुत्तर सम्यक् सम्बोधि लाभ गर्न चाहने व्यक्तिहरूले दिलैदेखि प्रशंसा गर्नुपर्दछ।

आफूले अदत्तादान नगर्नु अरुलाई पनि अदत्तादान नगर्ने सल्लाह दिनुपर्दछ अदत्तादान नगर्नु असल हो भनी तारिफ गर्नुपर्दछ। अदत्तादान नगर्ने व्यक्तिहरूको पनि दिलैदेखि प्रशंसा गर्नुपर्दछ।

आफू पनि काममिथ्याचारबाट हट्नुपर्छ। अरुलाई पनि यसबाट हट्ने सल्लाह दिनुपर्दछ काममिथ्याचार नगर्नु असल हो भनी तारिफ गर्नुपर्छ। काममिथ्याचार नगर्ने अरु व्यक्तिहरूको प्रशंसा पनि गर्नुपर्दछ। यही तरीकाले परुष वचन, अवद्धप्रलाप अभिध्या, व्यापाद र मिथ्यादृष्टि आदि आफूले पनि नगर्नु, अरुलाई पनि यस्तामा नलाग्ने सल्लाह दिनुपर्दछ। परुपवचन, अवद्ध, प्रलाप, अभिध्या, व्यापाद मिथ्यादृष्टिलाई छोड्नु असल हो भनी तारिफ गर्नुपर्दछ। यी नगर्ने अरु व्यक्तिको पनि हृदयदेखि तारिफ गर्नुपर्दछ।

आफूले पनि प्रथम, द्वितीय, तृतीय र चतुर्थ ध्यान गर्नुपर्दछ। अरुलाई पनि यी ध्यान गर्ने सल्लाह दिनुपर्दछ। यो ध्यान उत्तम हो भनी प्रसंशा पनि गर्नुपर्दछ। प्रथम, द्वितीय, तृतीय चतुर्थ ध्यान गर्ने अरु व्यक्तिहरूको प्रशंसा पनि गर्नुपर्दछ।

आफूले पनि मैत्री, करुणा, मुदिता र उपेक्षाको भावना गर्नुपर्दछ। अरुलाई पनि यी चार भावनामा लाग्ने सल्लाह दिनुपर्दछ।
यी चार भावना गर्नु असल हो भनी तारिफ पनि गर्नुपर्दछ। यी भावनामा लागेका व्यक्तिहरूको तारिफ पनि दिलैदेखि गर्नुपर्दछ। आफूले पनि आकाशानन्त्यायतन, विज्ञानानन्त्ययतन, आकिचनन्त्यायतन, नैवसंज्ञानासंज्ञायतन समापत्ति भावना गर्नुपर्छ। अरुलाई पनि यी समापत्ति भावना गर्ने सल्लाह दिनुपर्दछ।

यी आकाशानन्त्यायतन आदि समापत्ति भावना असल हो भनी तारिफ गर्नुपर्दछ। यी चार भावना गर्ने अरु व्यक्तिहरूको प्रसंशा पनि गर्नुपर्दछ।

(यस्तो व्यवहारमा रहनुलाई मृदुमूर्धगत भनिन्छ।)

आफूले पनि दानपारमिता, शीलपारमिता, क्षान्तिपारमिता, वीर्यपारमिता ध्यानपारमिना र प्रज्ञापारमिता यी ६ वटा पारमिता पूर्ण गर्नुपर्दछ। अरुलाई पनि यी पारमिता पूरा गर्ने सल्लाह दिनुपर्दछ। यी पारमिताहरू उत्तम हो भनी तारिफ गर्नुपर्दछ। यी पारमिता पूरा गरेका व्यक्तिहरूको प्रशंसा पनि दिलैदेखि गर्नुपर्दछ।
(यस्तो व्यवहारमा रहनुलाई मध्यमूर्धगत भनिन्छ।

आफूले पनि अध्यात्म शुन्यता, बहिर्धाशून्यता, अध्यात्मबहिर्धाशून्यता आदि सोह्र प्रकारको शून्यताको भावना गर्नुपर्दछ। अरुलाई पनि यी शून्यता भावना गर्ने सल्लाह दिनुपर्दछ। यी सोह्रवटा शून्य उत्तम हो भनी प्रसंशा गर्नुपर्दछ। यी सोह्रवटा शून्यताको भावना गर्ने अरु व्यक्तिहरूको प्रशंसा गर्नु उचित छ।

आफूले पनि चार स्मृति उपस्थानलाई भावना गर्नुपर्दछ। अरुलाई पनि यी चार उपस्थानको भावना गर्ने सल्लाह दिनुपर्छ। यी स्मृति उपस्थान गर्नु असल हो भनी वर्णन गर्नुपर्दछ। यी स्मृति उपस्थान गर्ने व्यक्तिहरूको

पनि प्रशंसा गर्नुपर्दछ ।

यसैगरी सम्यक् प्रहाण ऋद्धिपाद, इन्द्रिय, बल, बोध्यंगहरूको पनि भावना गर्नुपर्छ । यी भावना अरुलाई पनि गर्ने सल्लाह दिनुपर्दछ । यी भावना असल हो भनी तारिफ गर्नुपर्दछ । यी भावना गरिरहेका व्यक्तिहरूको पनि दिलैदेखि तारिफ गर्नुपर्दछ ।

आफूले पनि आर्यअष्टांगिक मार्गको भावना गर्नुपर्दछ । अरुलाई पनि यी भावना गर्ने सल्लाह दिनुपर्दछ । यो भावना गर्ने अरु व्यक्तिहरूको पनि प्रशंसा गर्नुपर्दछ । यो भावना गर्ने अरु व्यक्तिहरूको पनि प्रसंसा गर्नुपर्दछ । यो आर्यअष्टांगिक मार्गको भावना असल हो भनी प्रशंसा गर्नुपर्छ । यो भावना गर्ने अरु व्यक्तिहरूको पनि प्रशंसा गर्नुपर्दछ ।

आफूले पनि शून्यता, अनिमित्त, अप्रणिहित समाधि भावना गर्नुपर्छ । अरुलाई पगि यो भावना गर्ने सल्लाह दिनुपर्दछ । यो शून्यता अनिमित्त अप्रणिहित समाधि भावना असल हो भनी वर्णन गर्नुपर्दछ । यो भावना गर्ने अरुलाई पनि तारिफ गर्नुपर्दछ ।

आफूले पनि चत्तु: आर्यसत्यको भावना गर्नुपर्दछ । अरुलाई पनि चत्तु: आर्यसत्य अनुसार चल्ने सल्लाह दिनुपर्दछ । यो चत्तु: आर्यसत्य असल हो भनी तारिफ गर्नुपर्दछ । चत्तु: आर्यसत्यको भावना गर्ने अरु व्यक्तिहरूको पनि कदर गर्नुपर्दछ ।

आफूले पनि अष्ट विमोक्षको भावना गर्नुपर्दछ । अरुलाई पनि यो भावना गर्ने सल्लाह दिनुपर्दछ । यो अष्टविमोक्षको भावना असल हो भनी वर्णन गर्नुपर्दछ । यो भावना गर्ने व्यक्तिहरूको पनि हृदयदेखि नै प्रशंसा गर्नुपर्दछ ।

आफूले पनि नवानुपूर्वविहार समापत्ति भावना गर्नपर्दछ । अरुलाई पनि यो भावना गर्ने सल्लाह दिनुपर्दछ । यो नवानुपुर्वबिहार समापत्ति भावना गर्नु असल हो भनी तारिफ गर्नुपर्दछ । यो भावना गर्ने व्यक्तिहरूको पनि हृदयदेखि नै तारिफ गर्नुपर्दछ ।

आफूले अभिज्ञा प्राप्त गर्नुपर्दछ । अरुलाई पनि अभिज्ञा प्राप्त गर्ने सल्लाह दिनुपर्दछ । यो अभिज्ञा असल हो भनी वर्णन गर्नुपर्दछ । अभिज्ञा प्राप्त गरेका व्यक्तिहरूको पनि हृदयदेखि नै प्रशंसा गर्नुपर्दछ ।

आफूले पनि दश तथागतबल, चार वैशारद्य, चार प्रतिसंविद पूरा गर्नुपर्दछ । अरुलाई पनि पूरा गर्ने सल्लाह दिनुपर्दछ । दश तथागतबल, चार वैशारद्य, चार प्रतिसंविद असल हुन् भनी वर्णन गर्नुपर्दछ । यी पूरा गरिआएका व्यक्तिहरूको पनि हृदयैदेखि कदर गर्नुपर्दछ ।

आफूले पनि अठारवटा आवेणिक बुद्धधर्महरू पूरा गर्नुपर्दछ । अरुलाई पनि यी बुद्धधर्महरू पूरा गर्न सल्लाह दिनुपर्दछ । यी अठार आवेणिक बुद्धधर्महरू

असल हुन् भनी वर्णन गर्नुपर्दछ। यी पूरा गर्नेहरूलाई पनि हृदयैदेखि प्रशंसा गर्नुपर्दछ।

आफूले पनि महामैत्री, महाकरूणा, परिपूर्ण गर्नुपर्दछ। अरुलाई पनि परिपूर्ण गर्ने सल्लाह दिनुपर्दछ। यी महामैत्री, महाकरुणा उत्तम हुन् भनी वर्णन गर्नुपर्दछ। यी पूरा गर्नेहरूको पनि दिलैदेखि नै वर्णन गर्नुपर्दछ।

आफूले पनि अनुलोम प्रतिलोम प्रतित्यसमुत्पाद समापत्ति भावना गर्नुपर्दछ। अरुलाई पनि भावना गर्ने सल्लाह दिनुपर्दछ। अनुलोम प्रतिलोम प्रतित्यसमुत्पाद समापत्ति भावना असल हो भनी वर्णन गर्नुपर्दछ। यी समापत्ति भावना गर्नेहरूको पनि हृदयै देखि प्रशंसा गर्नुपर्दछ। हे सुभूति ! यही तरिकाले अनुत्तरसम्यक् सम्बोधिमा रहने बोधिसत्वमहासत्वले रहनुपर्दछ।

(यस्तो व्यवहारलाई अधिमात्रमूर्धगत भनिन्छ ॥

आफुले पनि दुःख केहो बुझ्दछ, दुःखको कारणलाई पनि छोड्छ र निरोध साक्षात्कार गरी मार्गको भावना गर्दछ। अरुलाई पनि दुःख चिन्ने सल्लाह दिन्छ, दुःख पैदा गर्ने कुरा छोड्ने मार्ग भावना गर्ने र निरोध साक्षात्कार गर्ने पनि सल्लाह दिन्छ। दुःख के हो बुझ्नुपर्छ र दुःख पैदा गर्ने कुरा छोड्नु, निरोध साक्षात्कार गर्नु, मार्ग भावना गर्नु असल हो भनी तारिफ गर्नु पर्छ। यी कुरा गर्ने अरु व्यक्तिहरूलाई पनि तारिफ गर्नुपर्दछ।

(यस्तो व्यवहार गर्नुलाई मृद्वीक्षान्ति भनिन्छ)।

आफूले पनि स्रोतापत्ति, सकृदागामी, अर्हत्, प्रत्येकबुद्धफल साक्षात्कार गर्ने ज्ञान उत्पन्न गर्छ, भुटकोटि (फल)लाई साक्षात्कार गर्दैन। अरुलाई पनि स्रोतापत्ति आदि मार्गफल साक्षात्कार गर्ने र मार्गफल साक्षात्कार र मार्ग फल साक्षात्कार गर्ने ज्ञान उत्पन्न गर्ने सल्लाह दिन्छ। स्रोतापत्ति आदि मार्ग फल साक्षात्कार गर्ने ज्ञान उत्पन्न गर्नु र असल भनी तारिफ गर्दछ। मार्गफल साक्षात्कार गरेका र मार्गफल साक्षात्कार गर्ने ज्ञान उत्पन्न गरिसकेका व्यक्तिहरूको पनि दिलैदेखि वर्णन गर्दछ।

(यस्तो व्यवहार गर्नुलाई मध्याक्षान्ति भनिन्छ॥

आफूले पनि बोधिसत्व न्यामावक्रान्ति लाभ गर्दछ। अरुलाई पनि बोधिसत्व न्यामवक्रान्ति लाभ गर्ने सल्लाह दिन्छ। यो लाभ गर्नु असल हो भनी तारिफ गर्दछ। बोधिसत्व न्यामावक्रान्ति लाभ गरेकाहरूको पनि हृदयैदेखि तारिफ गर्नुपर्दछ। हे सुभूति ! यस तरिकाले अनुत्तर सम्यक सम्बोधि लाभ गर्ने व्यक्तिले यी नियम पालना गर्नुपर्दछ।

(यस्तो व्यवहार गर्नुलाई अधिमात्र क्षान्ति भनिन्छ॥

आफूले पनि सबै प्राणीहरूलाई बोधिसत्वयानमा लगाउँछ। अरु प्राणीलाई पनि बोधिसत्वयानमा लाग्ने सल्लाह दिन्छ। बोधिसत्वयानमा लाग्नु असल हो भनी

वर्णन गर्दछ । अरु बोधिसत्वयानमा लागिरहनेहरूको पनि दिलैदेखि प्रशंसा गर्नुपर्दछ । आफूले पनि बुद्धक्षेत्रको परिशोधन गर्दछ । अरूलाई पनि बुद्धक्षेत्र परिशोधन गर्ने सल्लाह दिन्छ । बुद्धक्षेत्र परिशोधन गर्नेहरूलाई पनि हृदयैदेखि वर्णन गर्दछ ।

(यस्तो व्यवहारलाई मृदषोऽग्रधर्म भनिन्छ) ।

आफूले पनि बोधिसत्वको अभिज्ञा लाभ गर्छ । अरुलाई पनि लाभ गर्ने सल्लाह दिन्छ । बोधिसत्वको अभिज्ञा लाभ गर्नु असल हो भनी बयान गर्दछ । अरु पनि बोधिसत्वको अभिज्ञा लाभ गर्ने व्यक्तिहरूको पनि हृदयैदेखि बयान गर्दछ ।

(यस्तो व्यवहारलाई मध्यअग्रधर्म भनिन्छ ।)

आफूले पनि सर्वाकारज्ञताज्ञान उत्पन्न गर्छ अरुलाई पनि ज्ञान उत्पन्न गर्ने सल्लाह दिन्छ । सर्वाकारज्ञाताज्ञानको प्रसंशा गर्दछ । सर्वाकारज्ञताज्ञान हासिल गर्ने अरु व्यक्तिहरूको पनि दिलैदेखि प्रशंसा गर्नुपर्दछ । आफूले पनि सबै वासनानुसन्धि क्लेशलाई छोड्छन् । अरुलाई पनि छाड्ने सल्लाह दिन्छ । सबै वासनानुसन्धि क्लेश प्रहाण(नाश) गर्नुलाई तारिफ गर्दछ । सबै वासनानुसन्धि क्लेश नाश गरेका व्यक्तिहरूको पनि दिलैदेखि तारिफ गर्दछ ।

आफूले पनि आयुसंपद बनाउँछ । अरुलाई पनि आयुसंपद बनाउने सल्लाह दिन्छ । आयुसंपद असल हो भनी प्रशंसा गर्नुपर्दछ । आयुसंपदमा रहेका व्यक्तिहरूको पनि हृदयैदेखि प्रशंसा गर्नुपर्दछ ।

आफूले पनि सद्धर्मस्थितिलाई स्वीकार गर्छ । अरुलाई पनि सद्धर्मस्थितिलाई स्वीकार गर्ने सल्लाह दिन्छ । सद्धर्मस्थितिको पनि प्रशंसा गर्दछ । सद्धर्मस्थितिलाई स्वीकार गर्ने सत्पुरुषहरूको दिलैदेखि प्रशंसा गर्नुपर्दछ ।

हे सुभूति ! सम्यक सम्बोधि लाभ गर्ने बोधिसत्व महासत्वले यही नियमलाई पालना गर्नुपर्छ ।

हे सुभुति ! यसरी बोधिसत्व महासत्वले प्रज्ञापारमिता र उपाय कौशल्यमा पनि रहनुपर्दछ । यस्तो शिक्षामा रहँदा उसको रूप अनावरण हुनेछ । वेदना, संस्कार, विज्ञान पनि अनावरण हुनेछ । यसै गरी माथि उल्लेखित सद्धर्मास्थितिसम्मका सबै विषयहरु अनावरण हुनेछ । किन भने हे सुभूति बोधिसत्व महासत्वले रूप वेदना संज्ञा, संस्कार र विज्ञानलाई पूर्वान्त दृष्टिले ग्रहण गर्दैन । यसै गरी माथि उल्लिखित सर्वाकारज्ञतासम्मलाई पनि पूर्वान्तदृष्टिले ग्रहण गर्दैन । हे सुभूति ! किन भने जुन रूप ग्रहण गर्दैन त्यो रूप रूप होइन । यस्तै गरी परिग्रह नगरिएको सर्वाकारज्ञता पनि सर्वाकारता ज्ञान होइन किन भने यसमा आसक्त हुँदैन ।

बोधिसत्वको यो नियम सुनेर दुइहजार बोधिसत्वहरूले अनुत्पाद धर्म क्षान्ति प्रतिलाभ गरे ।

(यस्तो व्यवहार गर्नुलाई अधिमात्र अग्रधर्म भनिन्छ ।)
उपर्युक्त सबै विषयलाई निर्वेधभागीय भनिन्छ ।

# उपर्युक्त निर्वेधभागीयमा उल्लेखित पारिभाषिक शब्दहरूको अर्थ

## दश अकुशल

निम्न लिखित दशवटा कर्मलाई दश अकुशल कर्म(खराब काम)

कायिक अकुशल कर्म :
- प्राणातिपात - हिंसा गर्नु
- अदत्तादान - चोर्नु वा बलजफ्ती लुट्नु
- काममिथ्याचार- व्यभिचार गर्नु

वाचिक अकुशल कर्म:
- मृषावाद - झूठो कुरा गर्नु
- पैशुन्य - चुग्ली गर्नु, कुरा लगाउनु
- पारूष्य - कडा बचन बोल्नु, गालिगर्नु
- संभिन्न प्रलाप (अबद्ध प्रलाप)- सारहिन कुरा वा गफ गर्नु

मानसिक अकुशल कर्म:
- अभिध्या - अर्काको वस्तुमा लोभ गर्नु
- व्यापाद - अर्काको विगार्ने विचार गर्नु
- मिथ्यादृष्टि- पाप पुण्यको फल छैन भन्ने सम्झनु ।

भनिन्छ । यी दशवटा अकुशल कर्महरू पनि शरीरले गरिने, बोलिद्वारा गरिने र मनले गरिने कर्मका भेदले तीन प्रकारका अकुशल कर्म मानिन्छन् ।

## चतुर्ध्यान

प्रथम, द्वितीय, तृतीय, चतुर्थ यी चार ध्यानलाई चतुर्ध्यान भनिन्छ ।
प्रथम ध्यान :-

पृथ्वी आदि धेरै प्रकारका आलम्बनमा अभ्यास गरे पछि प्रथम ध्यान लाभ हुन्छ । प्रथम ध्यान कामधातुको वैराग्यबाट लाभ हुने हुँदा विषय वासनारहित पञ्च नवरण र दश अकुशललाई त्यागी कुनै आलम्बनलाई यो के हो भन्ने वितर्क र यो यही हो भन्ने विचार गर्दागर्दै विवेकबाट उत्पन्न भएको प्रीति सुख युक्त प्रथम ध्यान लाभ हुन्छ । अतः यो प्रथम ध्यानमा वितर्क, विचार, प्रीति, सुख, एकाग्रता यी पाँच अङ्गले युक्त भएका हुन्छन् ।

द्वितीय ध्यान :-

प्रथम ध्यान अभ्यास गर्दागर्दै बितर्क विचार पनि छोडी अध्यात्मिक प्रसन्नताले चित्त एकाग्र भई प्रीति सुखले युक्त द्वितीय ध्यान लाभ हुन्छ । अतः यो ध्यानमा प्रीति, सुख, अध्यात्मिक प्रसन्नता, र एकाग्रता यी चार अंगले युक्त हुन्छन् ।

तृतीय ध्यान :-

द्वितीय ध्यान अभ्यास गर्दा गर्दै प्रीतिलाई पनि उपेक्षा गरी स्मृति सम्प्रजन्य युक्त भई सुखयुक्त तृतीय ध्यान लाभ गर्ने हुन्छ । अतः यो ध्यानमा स्मृति, सम्प्रजन्य, उपेक्षा, सुख, एकाग्रता यी पाँच अंगले युक्त हुन्छन् ।

चतुर्थ ध्यानः

तृतीय ध्यान अभ्यास गर्दागर्दै सुख, दुःख, सौमनस्य, दौर्मनस्यलाई पनि छोडी विशुद्ध उपेक्षा र स्मृतिले युक्त चतुर्थ ध्यान लाभ हुन्छ । अतः उपेक्षा परिशुद्धि, स्मृति परिशुद्धि, अदुःखासुखा वेदना, एकाग्रता यी चार अंगले युक्त हुन्छन् ।

# चतुर्ब्रम्ह विहार

मैत्री, करुणा, मुदिता, उपेक्षा यी चार भावनालाई चतुर्ब्रम्ह विहार भनिन्छ ।

मैत्री :-

प्राणी मात्रको हित सुख होस् भनी भावना गर्नुलाई मैत्री भनिन्छ ।

करुणा :-

अर्काको दुःख हटाउने दयाको भावना गर्नुलाई करुणा भनिन्छ ।

मुदिता :-

अर्काको उन्नति भएको, सम्पन्न भएको देखेर हर्षित भई भावना गर्नुलाई मुदिता भनिन्छ ।

उपेक्षा :-

प्रिय अप्रियको भाव छोडी मध्यस्थ भावले भावना गर्नुलाई उपेक्षा

भनिन्छ ।

# चतुः आरूप्य समापति

आकाशानन्त्यायतन, विज्ञानानन्त्यायतन, आकिञ्चन्यायतन, नैवसंज्ञानासंज्ञायतन यी चारवटा समापत्तिलाई चतुः आरूप्य समापत्ति भनिन्छ ।

आकाशानन्त्यायतन :-

रूपस्कन्धमा दोषदेखी रूपस्कन्धबाट बिमुक्ति भएको आकाशको भावना गर्नुलाई उत्तम ठानी अनन्त आकाश, अनन्त आकाश भनी भावना गर्नुलाई आकाशानन्त्यायतन भनिन्छ।

विज्ञानानन्त्यायतन :-

आकाशानन्त्यायतनलाई भावना गर्ने विज्ञान (मन) हो । आकाशानन्त्यायतन भन्दा विज्ञानानन्त्यायतन भावना गर्नु असल हो । अनन्त विज्ञान अनन्त विज्ञान भनेर भावना गर्नुलाई विज्ञानानन्त्यायतन भनिन्छ ।

आकिञ्चन्यायतन :-

आकाशसँग सम्बन्ध भएको विज्ञान पनि असल होइन, यो संसारमा विज्ञान पनि केही होइन, आकाश पनि केही होइन भनी भावना गर्नुलाई आकिञ्चन्यायतन भनिन्छ ।

नैवसंज्ञानासंज्ञायतन :-

आकिञ्चन्यायतन आदिमा दोषदेखी संज्ञा(चैतन्य) भन्ने कुरो नत छ नत छैन भनी भावना गर्नुलाई नैवसंज्ञानासंज्ञायतन भनिन्छ ।

# षट् पारमिता

दान, शील, क्षान्ति वीर्य, ध्यान, प्रज्ञा यी ६ वटालाई षट् पारमिता भनिन्छ । पार्रमिता भनेको बुद्धत्व लाभ गर्न पूर्ण गर्नुपर्ने कार्य हो ।

दानपार्रमिता :-

स्वार्स्नी, छोरा, धन सम्पत्ति, कलेजो, फोक्सो, आँखा दान दिई दानपार्रमिता पूरा गरिन्छ । यसको मुख्य उद्देश्य प्राणीहरूप्रति महाकरुणा हो ।

शीलपार्रमिता :-

इन्द्रियको चंचलना छोड्नु, संवेदनशील, कुशल जम्मा गर्नु तथा

प्राणीहरूको उद्धार गर्नका भेदले यी शील तीनप्रकारले पूर्ण गर्नु नै शीलपारमिता हो ।

क्षान्तिपारमिता :-

धर्म ज्ञान गर्ने शक्ति, दुःख कष्ट सहने शक्ति, अरुले जे जस्तो गरे पनि सहने शक्ति यी तीन शक्तिले परिपूर्ण हुनुलाई क्षान्तिपारमिता भनिन्छ ।

वीर्य पारमिता :-

पुण्यकार्य गर्न आरम्भमा गरेका उत्साह, पुण्य गरिरहँदाको उत्साह, पुण्य पूर्ण भएको बेलाको उत्साहको भेदले यी तीन प्रकारको उत्साहले पूर्ण हुनुलाई वीर्यपारमिता भनिन्छ ।

ध्यान पारमिता :-

रागादि क्लेश हटाउनु, आनन्दले जीवन बिताउनु, सम्पूर्ण ऋद्धि लाभ गर्नुका भेदले यी तीन प्रकारका ध्यानले पूर्ण हुनु नै ध्यानपारमिता हो । यसको मुख्य उद्देश्य आफ्नो र अर्काको आकुल व्याकुल भइरहेको चित्तलाई एकाग्र( शान्त) पारिदिनु हो ।

प्रज्ञापारमिता :-

आफूले पढेर हासिल गरेको ज्ञान, चिन्तन मनन गरेर हासिल गरेको ज्ञान, भावना गरेर आएको ज्ञान यी तीन प्रकारका ज्ञानले परिपूर्ण हुनु नै प्रज्ञापारमिताले पूर्ण हुनु हो ।

यो प्रज्ञापारमिताको मुख्य उदेश्य एकाग्र चित्तमा रहेका व्यक्तिहरूलाई निर्वाण साक्षात्कार गराई दिनु र निर्वाण ज्ञान हासिल गराउनु हो ।

यी उपर्युक्त पारमिता लौकिक र लोकोत्तरका भेदले दुई किसिमका छन् । माथि उल्लेखित गरेका दानादि पारमितालाई लौकिक पारमिता भनिन्छ । देय, दाता, प्रतिग्राहक यी म मेरो भन्ने कल्पना छोडेर त्रिकोटी परिशुद्ध दानादिपारमिता पूरा गर्नुलाई लोकोत्तर पारमिता भनिन्छ ।

# षोडश शून्यता

निःस्वभावलाई शून्यता भनिन्छ । कुनै पनि वस्तुमा रहेको मौलिक अस्तित्वलाई (नित्यता) स्वभाव भनिन्छ । बौद्ध दार्शनिकहरुले यस स्वभावलाई परिकल्पित स्वभाव, परतन्त्र स्वभाव, र परिनिष्पन्न स्वभाव भनी तीन वर्गमा वर्गीकरण गरेका छन् । संसारका प्रत्येक पदार्थमा यी तीन स्वभाव रहेका

हुन्छन् ।

# परिकल्पित स्वभाव

जब कुनै वस्तुलाई हामी नाम राख्छौं, त्यो नाम केवल कल्पना मात्र हो । यस्तो कल्पना गरी राखेको नामलाई परिकल्पित स्वभाव भनिन्छ । यदि कुनै बालक जन्म्यो भने जन्मनु अगाडि उस्ले कुनै नाम लिएर आएको हुँदैन । जन्मेपछि आमा बाबुले रत्न, बुद्ध, आदि नाम राख्छ । त्यो रत्न भन्ने नाम कल्पना मात्र हो । त्यो बालक खास रत्न होइन । त्यो त केवल रगत मासु र हाडको संयुक्त डल्लो हो । अत: परिकल्पित स्वभाव वास्तवमा नभएको हुनाले नि:स्वभाव (शून्य) भनेको हो ।

# परतन्त्र स्वभाव

संसारका समस्त वस्तु कुनै न कुनै हेतु प्रत्यय (कारण)ले बनेका हुन्छन् । त्यसैले दूधमा एक थोपा दही राखिदियो भने त्यो दूध दहीमा बदलिन्छ । यसरी भिन्न भिन्न पदार्थको संयोग र हेतुप्रत्ययले भिन्नै पदार्थ बन्ने हुँदा यस्ता पदार्थलाई परतन्त्र स्वभाव भनिन्छ । अर्थात् भौतिक परिवर्तन र रासायनिक परिवर्तनले बनेका प्रतीत्यसमुत्पन्न सम्पूर्ण प्राणी अप्राणीका आफ्नो स्वभावको स्वतन्त्रता नभएकोले यी परतन्त्र स्वभावका वस्तुहरू हुन् यी वस्तुहरूलाई पनि नि:स्वभाव नै भनिन्छ ।

# परिनिष्पन्न स्वभाव

योगी महात्माहरूले हेतुप्रत्ययले बनेका प्रतीत्यसमुत्पन्न यी सम्पूर्ण वस्तुका नाम नभएको भए ग्राह्य ग्राहक (म मेरा) भन्ने भाव हुँदैन भनी भन्दछन् । यसरी नाम नभएको परतन्त्र स्वभावलाई परिनिष्पन्न स्वभाव भनिन्छ । यसलाई परमार्थ, तथता आदि पनि भनिन्छ । यो परिनिष्पन्न स्वभाव स्वत: आकाश जस्तै निर्मल, अविकार र अनिर्वचनीय भएकोले यसलाई पनि नि:स्वभाव (शून्य) भनिन्छ ।

यी निःस्वभावना (शून्यता) बोधिसत्वहरूले लाभ गर्ने अधिमुक्ति चर्या र प्रमुदिता आदिभूमिदेखि बुद्धभूमिसम्म बीसवटा विपश्यना(विदर्शना) भावना गर्नुलाई विंशतिशून्यता भनिन्छ । यहाँ अध्यात्म शून्यता आदि बोधिसत्वले भावना गरिने सोह्र शून्यताको मात्र वर्णन गरिन्छ ।

# अध्यात्म शून्यता

शरीरमा रहेका आँखा, नाक, कान, आदि वस्तुलाई अध्यात्म वस्तु भनिन्छ । यी अध्यात्म वस्तु पनि परतन्त्र र परिकल्पित भएको हुनाले निःस्वभाव नै हुन्छ । यो भावना गर्ने व्यक्तिको शरीरमा "म" भन्ने आसक्ति हट्ने हुन्छ ।

# बहिर्धा शून्यता

रूप रस, गन्ध आदि शरीरदेखि भिन्न सबै कुराहरू शून्य छ भनी भावना गर्नुलाई बहिर्धा शून्य भनिन्छ ।

# अध्यात्म बहिर्धा शून्यता

अध्यात्म (आँखा आदि इन्द्रिय) र बाह्य (रूपादि वस्तु) यी दुईको सत्यता एवं नित्यता छैन भनी निःस्वभाव भावना गर्नुलाई अध्यात्म बहिर्धा शून्यता भनिन्छ । यी तीन प्रकारको शून्यता भावना अधिमुक्तिचर्या भुमिमा बस्ने बोधिसत्वहरूले गर्ने विपश्यना हुन् ।

# महाशून्यता

पूर्व पश्चिम आदि दश दिशाहरूको वास्तविक दिशा छैन भनी दिशाहरू

कल्पना मात्र हुन्। अतः यो संसार नै छैन भनी भावना गर्नुलाई महाशून्यता भनिन्छ। यो भावना प्रमुदिता भूमिसम्म पुगेका बोधिसत्वहरूले गर्ने भावना हो।

# शून्यता शून्यता

अध्यात्म आदि सम्पूर्ण वस्तु शून्य छ भन्ने विचार गर्ने ज्ञान पनि नित्य नभएकाले निःस्वभाव शून्य नै हो भनी भावना गर्नुलाई शून्यता शून्यता भनिन्छ।

# परमार्थ शून्यता

यहाँ परम् शब्दको अर्थ निर्वाण हो। निर्वाणको वास्तविक रूप उदाहरण दिई प्रस्तुत गर्ने कुनै वस्तु नभएकोले निर्वाण पनि शून्य नै हो भनी भावना गर्नुलाई परमार्थ शून्यता भनिन्छ। यो भावनामा कुनै बस्तुसँग आसक्त नहुने स्वभाव हुनाले द्वितीय विमला भूमिमा बोधिसत्वहरुले गर्ने भावना हो।

# सस्कृत शून्यता

कामधातु, रूपधातु, अरूपधातु आदि संस्कृत वस्तुहरू हेतुप्रत्ययले नै बनेका हुन्। अतः यी पनि शून्य नै हुन् भनी भावना गर्नुलाई संस्कृत शून्यता भनिन्छ। यो भावना तृतीय प्रभाकरी भूमिमा बस्ने बोधिसत्वहरूले गर्ने भावना हो।

# असंस्कृत शून्यता

उत्पन्न नभएको, निरोध नभएको, परिवर्तन नहुने आकाश जस्ता वस्तुलाई असंस्कृत वस्तु भनिन्छ। यस्ता असंस्कृत वस्तुहरू स्वभावैले नहुने हुनाले असंस्कृत शून्यता भनिन्छ।

यो असंस्कृत शून्यता कुनै वस्तुसँग पनि आसक्त नहुने हुनाले चतुर्थ अर्चिष्मती भूमिमा बस्ने बोधिसत्वले मात्र यो भावना गरिन्छ ।

# अत्यन्त शून्यता

उच्छेद (मरेपछि फेरि जन्म लिनुपर्दैन) र शाश्वत (नित्य) यी दुई कुरालाई अन्त भनिन्छ । या अन्त पनि निःस्वभाव हो भनी भावना गर्नुलाई अत्यन्त शून्यता भनिन्छ । यो भावना पञ्चम सुदुर्ज भूमिमा बस्ने बोधिसत्वहरुले गर्दछन् ।

# अनवराग्र शून्यता

संसारको आदि, मध्य, अन्त भन्ने कुरा कल्पना मात्र हो । यी आदि, मध्य, अन्त पनि निःस्वभाव नै हुन् भनी भावना गर्नुलाई अनवराग्र शून्यता भनिन्छ । यो भावना षष्ठ अभिमुखी भूमिमा बस्ने बोधिसत्वहरूले गर्दछन् ।

# अनवकार शून्यता

छर्नु, छोड्नु र दिनुलाई अवकार भनिन्छ । छर्नु आदि नगर्नुलाई अनवकार भन्निछ । जगतसत्वलाई उद्धार गर्ने छ भन्ने यो अनवकार पनि निःस्वभाव हो, शून्य हो भनी भावना गर्नुलाई अनवकार शून्यता भनिन्छ । सप्तम भुमि दुरंगमा भूमिमा बस्ने बोधिसत्वहरूले यो भावना गर्दछन् ।

# प्रकृति शून्यता

कुनै पनि वस्तुमा रहेको स्वभाव कुनै आर्यहरूद्वारा संपादित स्वभाव होइन । वस्तुको यस्तो स्वभाव (प्रकृति) को प्रकृति छैन । निःस्वभाव हो भनी भावना गर्नुलाई प्रकृति शून्यता भनिन्छ ।

# लक्षण शून्यता

रूप आदिको दु:ख दिने लक्षण रूपको लक्षण नपाइने हुनाले लक्षण पनि शून्य हो भनी भावना गर्नुलाई लक्षण शून्यता भनिन्छ ।

# सर्वधर्म शून्यता

सम्पूर्ण असंस्कृत धर्म समूह परस्परको अपेक्षाद्वारा मात्र भएको संझिने हुनाले सम्पूर्ण धर्म(पदार्थ) शून्य नै हुन् भन्ने भावना गर्नुलाई सर्वधर्म शून्यता भनिन्छ । यी प्रकृति शून्यता र सर्वधर्मशून्यता निर्विकल्प क्षेत्र शुद्धिद्वारा चर्याफल भूमिका प्रतिवेध वशिता र परिकर्म वशिता प्राप्त गर्ने अष्टम अचला भूमिमा बस्ने बोधिसत्वहरूले गर्दछन् ।

# अभाव शून्यता

आकाश आदि असंस्कृत वस्तुलाई अभाव भनिन्छ । अभाव वस्तु स्वत: शून्य भएको हुनाले अभाव शून्यता भन्छि ।

# अभाव स्वभाव शून्यता

दुई वस्तुको संयोगले बन्ने बस्तुलाई प्रतित्यसमुत्पन्न बस्तु भनिन्छ । यो प्रतीत्य समुत्पन्न वस्तु भन्ने भावना परतन्त्र मात्र हो । यो स्वतन्त्र नभएकोले नि:स्वभाव नै हो, यो वस्तुहरूमा संयोग नहुने हुनाले अभाव स्वभाव शून्यता भनिन्छ ।

# चतु: स्मृति उपस्थान

| | | |
|---|---|---|
| कायानुस्मृति | - | शरीरलाई सम्झना गरिरहनु |
| बेदनानुस्मृति | - | सुखादि वेदनाको संझना गरिरहनु |
| धर्मानुस्मृति | - | संस्कृत, असंस्कृत वस्तुको सम्झना गर्नु |

| | | |
|---|---|---|
| चित्तानुस्मृति | - | रागादि युक्त वा मुक्त भनी आफ्नो चित्तलाई सम्भिरहनु |
| भावनाहरू | | यी उपर्युक्त चार प्रकारका स्मृति उपस्थान छन् |

स्मृति सम्भनालाई सधै उपस्थित गरिराख्नु नै स्मृति उपस्थान हो ।

# सम्यक् प्रहाण

उत्पन्न भएको पुण्यलाई रक्षा गर्नु, उत्पन्न नभएको पुण्यलाई उत्पन्न गर्नु उत्पन्न भएको अकुशललाई नाश गर्नु, उत्पन्न नभएको अकुशललाई उत्पन्न हुन नदिनु यसरी चारप्रकारको सम्यक् प्रहाण हुन्छन् ।

# पञ्चबल, पञ्चइन्द्रिय

श्रद्धा, वीर्य, समाधि, स्मृति, प्रज्ञा, यी पाँचवटालाई क्लेश दमन गर्ने बलको काम गर्दा पञ्चबल भनिन्छ । अनि यीनै पाँचवटाले इन्द्रियको काम गर्दा पाँच इन्द्रिय भनिन्छन् ।

# ऋद्धिपाद

छन्द ऋद्धिपाद, वीर्य ऋद्धिपाद, चित्त ऋद्धिपाद, मीमांसा ऋद्धिपादको भेदले ऋद्धिपाद चार प्रकारका मानिन्छन् । ऋद्धि अर्थात् माछा जस्तै पानीमा तैरिन सक्नु, चरा जस्तै आकाशमा उड्न सक्नु आदि विशेषताको पाद जरा वा मूल कुरालाई ऋद्धिपाद भनिन्छ ।

# छन्द ऋद्धिपाद

यो काम गरेरै छाडौंला भन्ने छन्द(प्रवल इच्छा) लाई छन्द ऋद्धिपाद भनिन्छ ।

# चित्त ऋद्धिपाद

पूर्व जन्मको पुण्यले यस जन्ममा असल चित्त उत्पत्ति हुन्छ यस्तो असल चित्तले पनि समाधि लाभ गर्न हुन्छ, यस प्रकारको समाधिलाई चित्त ऋद्धिपाद भनिन्छ ।

# वीर्य ऋद्धिपाद

उत्साह, उद्योग, जाँगरलाई प्रधान बनाई प्राप्त गरेको समाधिलाई वीर्य ऋद्धिपाद भनिन्छ ।

# मीमांसा ऋद्धिपाद

अध्ययन, विचार विमर्श(मीमांसा)को कारणबाट लाभ भएको समाधिलाई मीमांसा ऋद्धिपाद भनिन्छ ।

# बोध्यंग

स्मृति, धर्मविचय(प्रज्ञा), वीर्य(उत्साह), प्रिती(मानसिक सन्तुष्टि), प्रश्रब्धि(शान्ति), समाधि (एकाग्रता) एवं उपेक्षा यी सातवटा बोधिज्ञान लाभ गराउने अंगहरू हुन् । अतः यी सातवटालाई सप्तबोध्यांग भनिन्छन् ।

# अष्टांगिक मार्ग

सम्यक्, दृष्टि, सम्यक् संकल्प, सम्यक् वाक्, सम्यक् कर्मान्ति, सम्यक् व्यायम सम्यक् आजीव सम्यक स्मृति, सम्यक समाधि यी आठवटा मार्ग(बाटो) नै निर्वाण (दु:ख निरोध) गर्ने उपाय हो ।

# सम्यक दृष्टिः

पाप पुण्यको फल छ भन्ने विचारलाई सम्यक् दृष्टि भनिन्छ। अर्थात चतुः आर्यसत्यलाई देख्नु नै सम्यक् दृष्टि भनिन्छ।

सम्यक संकल्प

संसारबाट मुक्त हुन पाए हुन्छ, अरुको दुःख हेर्न नपरे हुन्छ, अरुलाई हिंसा गर्ने चित्त उत्पन्न नभए हुन्छ भन्ने संकल्प गर्नुलाई सम्यक् संकल्प भनिन्छ।

# सम्यक् वाक् :

सत्य, स्वच्छ कुरा गर्नु, चुग्ली लगाई अर्कालाई परस्परमा फुट पैदा गर्ने कुरा नगर्नु, अर्काको चित्त नदुखाउने कुरा गर्नु, किस्सा कहानी जस्तो व्यर्थ कुरा नगर्नुलाई सम्यक् वाक् (असल बोलिबचन)भनिन्छ।

# सम्यक कर्मान्तः

प्राणी हिंसा नगर्नु, अर्काको वस्तु वा धन चोरेर नलिनु, अर्काको स्त्री वा पुरुषसँग व्यभिचार नगर्नुलाई सम्यक् कर्मान्त (असल काम) भनिन्छ।

# सम्यक आजीव

शस्त्र, प्राणी, रक्सी, जाँड, मासु विष आदि वस्तुको व्यापार नगरी निस्कपटपूर्वक अरु व्यापार आदि गरी जीवीका गर्नुलाई सम्यक् आजीव (राम्रो जिवीका) भनिन्छ।

# सम्यक व्यायाम

आफूले नगरेको पाप नगर्ने, गरेको पाप कटाउने, नगरेको पुण्य गर्ने, गरेको पुण्य स्थिर गर्ने उद्योग, कोशिश र उत्साह गर्नुलाई सम्यक् व्यायाम (उत्तम उत्साह वा वीर्य) भनिन्छ।

# सम्यक स्मृति :

कायानुस्मृति, वेदनानुस्मृति, चित्तानुस्मृति र धर्मानुस्मृति यी चार स्मृति(सम्झनु)लाई नै सम्यक् स्मृति भनिन्छ ।

# सम्यक् समाधि

नाना प्रकारका समाधिलाई छाडी बुद्धले अशभिव्यक्त गरिएका प्रथम आदि ध्यानलाई सम्यक् समाधि भनिन्छ ।

# त्रिविमोक्ष:

शून्यता अप्रणिहितका भेदले विमोक्ष (निर्वाण) तीन प्रकारका हुन्छन् ।

# शून्यता विमोक्ष

बौद्धधर्ममा रूप, वेदना, संज्ञा, संस्कार, विज्ञान यी पाँच स्कन्धको समूहलाई नै प्राणी भनिन्छ । म, मेरो अनन्त कल्पदेखि आइरहेको आत्मभाव केवल अविद्या, अज्ञान र मोह मात्र हो । अत: म, आत्मा, (आफू) भन्ने वस्तु छैन भनी गरेको भावनाद्वारा लाभ भएको विमोक्षलाई शून्यता विमोक्ष भनिन्छ ।

# अनिमित्त विमोक्ष

सबै वस्तुहरू क्षण क्षणमा परिवर्तन भइरहने हुनाले कुनै वस्तुको पनि सच्चा निमित्त (विशेष विषय) ग्रहण गर्न सकिँदैन । यसरी कुनै विषयमा विशेषतालाई याद नगरीकन ध्यान गरेर लाभ भएको विमोक्षलाई अनिमित्त विमोक्ष भनिन्छ ।

# अप्रणिहित विमोक्ष:

आफूले चाहेका समस्त वस्तुहरू नित्य र आफ्नो अधीनमा नभएकोले दु:खमय छ भनी सबै वस्तुहरू प्रतिको तृष्णा तथा प्रार्थना छाडी गरेको भावनाबाट लाभ भएको विमोक्षलाई अप्रणिहित विमोक्ष भनिन्छ।

# चतु:आर्यसत्य

दु:ख सत्य, दु:ख समुदयसत्य, दु:ख निरोधसत्य, दु:खनिरोधमार्गसत्य यी चारवटालाई चतु: आर्यसत्य भनिन्छ। यी चतु: आर्यसत्यलाई भगवान् बुद्धले मभन्दा अघिका महामानवहरू कसैले पनि जान्न नसकेको, मैले नै सबभन्दा पहिले पत्तालगाएको ज्ञान भनी भन्नुभएको छ। त्यसैले आर्य (बुद्ध) को सत्य (यथार्थ कुरो) को ज्ञानलाई चतु: आर्यसत्य भनेका हुन्।

# दु:ख सत्य:

जन्मेदेखि मरणसम्मको जीवनमा हामीले जति पनि खानु, लाउनु र पिउनुको लागि विभिन्न कार्यहरू गर्छौं ती सबै सुख प्राप्तिका लागि गरिएका खोजी हुन्। यदि सुखी भएको भए सुखको खोज मनुष्यले कहिल्यै गर्ने थिएन होला। त्यसकारण हाम्रो जीवन (पञ्च उपादान स्कन्ध) नै दु:ख हो भनी दु:ख सत्यको घोषणा गर्नुभयो।

# दु:ख समुदयसत्य

हाम्रो जीवनमा खाने, लाउने आदि कामतृष्णा र स्वर्ग नरकमा जन्म लिने भन्ने परलोकको भव तृष्णा तथा स्वर्ग नरक छैन, पाप पुण्यको फल छैन, यही संसारमा जति मोज मज्जा गर्न सक्छ गरौं भन्ने विभवतृष्णाले नै हामीले

अर्को जन्म लिएको र अर्को जन्म लिनु परेको कारण हो । यी उपर्युक्त तृष्णाहरू नै दु:खका कारण (दु:ख समुदय) हुन् । अतः दु:ख समुदयसत्य पनि निश्चय हो भनी बुद्धले भन्नुभयो ।

# दु:ख निरोधसत्य

दु:खलाई रोक्ने, दु:खलाई निशेष हुने गरी निर्मूल पार्नुलाई दु:ख निरोध भनिन्छ । अविद्या र तृष्णा हटेमा यो दु:ख निरोध (निर्वाण) हुन्छ ।

# दु:ख निरोधमार्गसत्य

तृष्णा र अविद्या हटाउने मार्ग (उपाय) आर्य अष्टांगिकर्मांग हुन् भनी बुद्धले भन्नुभएको छ ।

# नवानुपूर्वसमापत्ति

प्रथम, द्वितीय, तृतीय, चतुर्थ ध्यान, आकाशानात्यायतन, विज्ञानानन्त्यायतन, आकिंचन्यायतन, नवसंज्ञानासंज्ञायतन निरोध समापत्ति यी नौवटा समापत्ति भावना क्रमश गर्नुलाई नवानुपूर्वसमापत्ति भनिन्छ ।

# अभिज्ञा

ऋद्धि, दिव्य, श्रोत्र, परचित्तज्ञान, पूर्वजातिस्मरण, च्यूति उत्पादज्ञान, आस्रव क्षयज्ञान यी ६ वटालाई अभिज्ञा भनिन्छ ।

# दश तथागतबल

| | | |
|---|---|---|
| १. स्थानास्थानबल | - | ठीक बेठिक छुट्याउने ज्ञानको बल |
| २. कर्मविपाक ज्ञानबल | - | यो यो पुण्य अपुण्यको यो फल हुन्छ |

भन्ने ज्ञानको बल ।

३. नाना धातु ज्ञानबल - कामधातु, रूपधातु, अरुपधातु आदि नाना धातुको ज्ञान गर्ने बल ।

४. नाना अधिमुक्ति ज्ञानबल - प्राणीहरूको नाना प्रकारको दृढ निश्चय जान्ने बल ।

५. सत्वेन्द्रिय परापर ज्ञानबल - प्राणीहरूको श्रद्धा आदि इन्द्रिय कतिको बलियो छ भन्ने जान्ने बल ।

६. सर्वत्रगामिनि प्रतिपदबल - ब्रम्हलोकमा जाने बाटो यो, नरकमा जाने बाटो यो, मोक्ष हुने बाटो यो भनेर सबैतिर जाने ज्ञानको बल ।

७. संक्लिश व्यवदान व्यवस्थान ज्ञानबल - चतुर्ध्यान, अष्ट विमोक्ष, चतु: अराप्य निरोध समापत्तिको यो दोष, यो शुद्धि, यो नियम भन्ने जान्ने बल ।

८. पूर्वेनिवासानुस्मृति ज्ञानबल - कल्प कल्प अगाडिको जन्मको कुरा सम्झने ज्ञानको बल ।

९. श्च्युत्युत्पत्ति ज्ञानबल - यो प्राणी यहाँ मरण भएर यहाँ जन्म लिन गयो भन्ने ज्ञानको बल ।

१०. आस्रवक्षयाज्ञानबल - रागादि आस्रव ममा छैन भन्ने जान्ने ज्ञानको बल ।

यी उपर्युक्त दश प्रकारको बल भगवान् बुद्धमा भएकाले उहाँलाई दशबल भनिएको हो ।

# चतुवैशारद्य

अभिसंवोधि, आस्रवक्षय ज्ञान, नैर्याणिक, मार्गावतरण यी चारवटा वैशारद्य अर्थात् निर्भयता भनिन्छ ।

अभिसंबोधि - मलाई बुद्धत्व लाभ भयो ।
आस्रवक्षय ज्ञान - मेरो आस्रव क्षय भयो ।
नैर्याणिक - यो निर्वाण प्राप्त गर्ने बाटो हो ।
मार्गावितरण - यो कुशल, यो अकुशल, यसको फल यस्तो हुन्छ, यो फरक हुँदैन ।

मैले पत्ता लगाएका यी उपर्युक्त चार कुरा श्रमण, देव, मार र ब्रम्हको अगाडि

बोल्न मलाई त्रास छैन । यसमा मलाई कुनै किसिमको भय शंका छैन । म फूर्तिका साथ धर्मचक्र प्रवर्तन गर्दछु भन्ने बुद्धको निर्भीकतालाई चतुवैशारद्य भनिन्छ ।

# चतुप्रतिसंविद

धर्म, अर्थ, निरुक्ति, प्रतिभान यी चारवटालाई प्रतिसंविद भनिन्छ ।

धर्म प्रतिसंविदः

अविद्या, अदर्शन, अनभिसमय आदि धर्मग्रन्थका शब्दहरूको अर्थ गर्दा तद् तद् धर्मग्रन्थको भाव नबिगारिकन सावधान भएर व्याख्या गर्नुलाई धर्म प्रतिसंविद भनिन्छ ।

निरुक्ति प्रतिसंविद :

भाषा तथा धर्ममा मेल खाने तरिकाले उपपत्ति सहितको विग्रहद्वारा बोध गराउनुलाई निरूक्ति प्रतिसंविद भनिन्छ ।

जस्तैः "बाहित पापो इति ब्राम्हण" अर्थात् पापलाई पखालेर पठाउनेलाई ब्राम्हण भनिन्छ । यहाँ ब्राम्हण शब्दको निरुक्ति भयो ।

अर्थ प्रतिसंविदः

कुनै दुई अर्थ हुने शब्दको अभिप्राय (भाव) नबिगारिकन व्याख्यान गर्नु र कुनै वस्तुको लक्षण अर्को वस्तुको लक्षणसँग नबिग्रने गरी व्याख्या गर्नुलाई अर्थ प्रतिसंविद भनिन्छ ।

प्रतिभान प्रतिसंविद : धर्मको नाना प्रभेद गरेर देखाउनुलाई प्रतिभान प्रतिसंविद भनिन्छ ।

# अष्टादश आवेणिक बुद्ध धर्म

तथागतको कुनै कालमा भूल हुँदैन । १. खलबल गर्ने स्वभाव हुँदैन । २. स्मृति हीन र लोप हुँदैन । ३. असाबधान हुँदैन ४. नानात्वसंज्ञा (भव निर्वाण आदि कल्पना) हुँदैन । ५. अज्ञानद्वारा उपेक्षा गर्दैन । ६. कार्य गर्ने इच्छा अपूर्ण हुँदैन । ७. उत्साह हीन हुँदैन । ८. स्मृति हीन हुँदैन ९. समाधि हीन हुँदैन । १०. प्रज्ञाको हीनता हुँदैन । ११. विमुक्ति हानि हुँदैन १२. निर्वाण साक्षात्कारको हानि हुँदैन १३. संपूर्ण शरीरको कार्य ज्ञान(चेतना) पूर्वक मात्र हुन्छ । १४. संपूर्ण वचन ज्ञान (होस) पूर्वक मात्र हुन्छ । १५. संपूर्ण मनको कर्म पनि ज्ञानपूर्वक मात्र हुन्छ । १६. भूतकालमा पनि अनासक्त ज्ञानले युक्त हुन्छ । १७. वर्तमानकालमा

पनि अनासक्त ज्ञानले परिपूर्ण हुन्छ । १८. यी उपर्युक्त भगवान् बुद्धको विपेशतालाई आवेणिक धर्म अर्थात् जटिल नभएको धर्म भन्दछन् ।

# प्रतीत्यसमुत्पाद

यो हुँदा यो हुन्छ, यसको उत्पत्ति हुँदा यो उत्पत्ति हुन्छ अर्थात् दूध हुँदा दही बन्छ दहि मथ्दा नौनी बन्छ भन्ने कार्यकारण भाव देखाउनुलाई प्रतीत्यसमुत्पाद भनिन्छ । अतः अविद्या, संस्कार, विज्ञान, नामरूप, षडायतन, स्पर्श, वेदना, तृष्णा, उपदान, भव, जाति जरामरणलाई द्वादशांग प्रतीत्यसमुत्पाद वा भवचक्र भनिन्छ ।

अविद्या र संस्कारको सम्बन्ध पूर्वजन्म अर्थात भूतकालसँग सम्बन्ध रहेको हुनाले यी दुईलाई पूर्वजन्मको विषय भनिन्छ । जाति र जरामरण हामी मरेपछि अर्को जीवन लिन जानुसँग सम्बन्ध रहेको छ । अतः जाति र जरामरणलाई भविष्यत् कालको विषय भनिन्छ । विज्ञान, नामरुप षडायतन, स्पर्श, वेदना, तृष्णा, उपादान, भव यी आठवटा हाम्रो अहिलेको अर्थात वर्तमान जीवनसँग सम्बन्धित भएको हुनाले यिनीहरूलाई वर्तमानकालको विषय भनिन्छ । यसरी यी द्वादशांग प्रतीत्यसमुत्पादमा पूर्वजन्म, यस जन्म, पुनर्जन्मको विषय गरी तीन जन्मको सम्बन्ध देखाएका छन् ।

जन्म हुनु अगाडि "म" छ कि छैन भन्ने शंका निर्मूल गर्न अविद्या र संस्कारको वर्णन गरिएको छ । विज्ञानदेखि भवसम्मको आठवटा कुरा वर्तमान अवस्थामा जन्म लिइरहने "म"को हुँ भन्ने ज्ञान गराउन उपदेश गर्नुभएको हो । जाति र जरामरणको उपदेश दिई भविष्यमा पनि 'म' ले जन्म लिन जानेछ कि भन्ने कुरा बोध गराइएको छ ।

अविद्या, तृष्णा, उपादान यी तीनवटालाई क्लेशावर्त तथा संस्कार र भवलाई कर्मावत भनिन्छ । किन भने प्राणीले गर्ने पुण्यापुण्य कर्म नै संस्कार र भव हुन् । विज्ञान, नामरुप, षडायतन, स्पर्श, बेदना, जाति, जरामरण आदि यी सात वटालाई फल वा विपाक भनिन्छ । त्यस्तै अविद्या र संस्कारलाई हेतु, जाति र जरामरणलाई फल भन्ने चलन पनि छ ।

यस जन्ममा रूप र आँखा, शब्द र कान, गन्ध र नाक, स्वाद र जिब्रो, छाला र स्पर्श भूत भविष्यत्कालका विषयमा अनि मनो धातुको संयोग हुँदा देखें, सुनें, सुघें, स्वाद लिएँ, छोएँ मनन गरे, भन्ने चलन छ प्रकारका विज्ञान( मन) उत्पन्न हुन्छ । त्यसपछि यी कुराहरू आफूलाई अनुकुल भए सुख वेदना,

प्रतिकूल भए दुःख वेदना, सुख पनि नभएको भए उपेक्षा वेदना उत्पन्न हुने हुन्छ ।

सुख वेदना भए फेरि भए हुन्थ्यो, सधै रहिरहे हुन्थ्यो भन्ने र दुःख वेदना भए यो नभइदिए हुन्थ्यो, नाश भए हुन्थ्यो भन्ने र दुःख पनि नभए त्यसमा वास्ता नगर्ने खालका तृष्णाहरू उत्पन्न हुने हुन्छ । यही राग, द्वेष र मोहात्मक तृष्णाले सुखलाई पाउने, दुःखलाई हटाउने अनि सुख पनि दुःख पनि नभएको भए मोहात्मक तृष्णाको प्रयत्नहरू गर्ने हुन्छ । यस प्रकारको प्रयत्नलाई उपादान भनिन्छ ।

उपादानको क्रममा यो उपादान(प्रयत्न)ले नै हामीलाई नाना थरिका पुण्यापुण्या कर्महरू गर्न लगाउँछ । यसैलाई भव भनिन्छ । यो कुरा हामी यस जन्ममा प्रत्यक्ष देख्छौं । हामीहरू जन्मे पछि अवश्य मर्छौं, मर्ने अवस्थाको अन्तिम क्षणमा हामीले गरेका प्रवल कर्मको मात्रा स्मृति हुने हुन्छ । सोही कर्म र 'म' भन्ने अविद्याले हामीलाई अर्को जन्म लिन लगाउँछ । त्यो जन्मलाई जाति भनिन्छ ।

जाति भन्नासाथ क्रमशः विज्ञान, नामरूप, षडायतन, स्पर्श, वेदना, तृष्णा, उपादानत्तभवको स्वतः उत्पति हुने हुन्छ । संक्षेपमा भनुँ भने जाति भए पछि जरामरण हुन्छ । जरामरण भए पछि म, मेरो भन्ने अविद्या र संस्कार उत्पन्न भई फेरि जन्म लिन जाने हुन्छ यसरी अनादिकालदेखि जाति जरामरण.......हुँदै आइरहेको छ भन्ने कुरो अनुलोम प्रतीसत्यमुत्पादले देखाउँछ । अतः अविद्या (म, मेरो) भन्ने भाव नभएको भए संस्कार (कर्म) हुँदैन । संस्कार नभएको भए विज्ञान (गर्भ अवस्थाको पहिलो मन) हुँदैन, मन नभएको भए नामरूप (पञ्चस्कन्ध) हुँदैन पञ्चस्कन्ध नभएको भए षडायतन (इन्द्रिय)हरू हुँदैनन् । इन्द्रियहरु नभएको भए बाहिरिया विषयहरूको स्पर्श हुँदैन । स्पर्श नभएको भए सुख दुखादि वेदना हुँदैन । वेदना नभएको भए हामीलाई यो नभए हुन्थ्यो भन्ने तृष्णा हुँदैन । तृष्णा नभएको भए उपादान(प्रयत्न) हुँदैन, प्रयत्न नभएको भए भव (कर्म) हुँदैन, कर्म नभएको भए जाति (पुनर्जन्म) हुँदैन । पुनर्जन्म नभएको भए जरामरण पनि हुँदैन यसरी सारा दुःखको अन्त हुनु साथै प्रतिलोम प्रतीत्यसमुत्पादले दुःख निरोध गर्दछ भन्ने कुरा पनि स्पष्ट हुन आउँछ ।

# द्वादशाकार धर्मचक्र

यो दुःख आर्यसत्य हो १) यो दुःख आर्यसत्य बुझ्न लायक छ २) यो

दुःख आर्यसत्यलाई चिन ३) यो दुःख समुदयसत्य हो ४) यो दुःख समुदय नष्ट गर्न लायक छ ५) यो दुःख समुदयलाई नष्ट गरिसकें ६) यो दुःख निरोधसत्य हो ७) यो दुःख निरोधसत्यलाई साक्षात्कार गर्न लायक छ ८) यो दुःख निरोधसत्यलाई साक्षात्कार गरिसकें ९) यो दुःख निरोध मार्गसत्य हो १०) यो दुःख निरोधसत्य भावना गर्न लायक छ ११) यो दुःख निरोध मार्गसत्य भावना गरिसकें १२) यसरी उपर्युक्त तरिकाले पहिले कहिल्यै मन नलगाएको विषयमा मन लगाउँदा प्रत्यक्ष भएकोले यसलाई प्रज्ञाचक्षु शंकनिर्मूल भएकोले ज्ञान, सच्चा कुरा भएकोले विद्या, विशुद्ध भएकोले बुद्धि, भनी यी उपयुक्त १२ वटा वाक्यलाई तीन पटक गरी भगवान् बुद्धले दोहोऱ्याउनु भएकोले यसलाई त्रिपरिवर्त द्वादशाकार धर्मचक्र भनिएको हो ।

# बोधिसत्व न्यामावक्रान्ति

रूप वेदना आदि सम्पूर्ण वस्तुको ज्ञान गर्नु, आलम्बन गर्नुछ भन्ने सम्झनुलाई उपलम्भ वा आम भनिन्छ । कुनै वस्तु पनि छैन केवल बस्तुहरू छन् भन्ने हामीहरूमा आभास मात्र भएको हो भनी दृढ विश्वास हुनुलाई न्याम भनिन्छ । अतः बोधिसत्वलाई जब शून्यताको भावना गर्दा शून्यताको पूर्ण ज्ञान हुन्छ तब त्यो ज्ञानलाई बोधिसत्वन्यामावक्रान्ति भनिन्छ ।

# बोधिसत्वयान

दान, शील, क्षान्ति, ध्यान, वीर्य प्रज्ञापारमिताको भावना गरी म मेरो भन्ने उपलम्भलाई छोडी 'बुद्धो भवेयं जगतो हिताय' भन्ने बोधिचित्तलाई उत्पत्ति गरी जगत हित गर्ने कार्यमा लाग्नु नै बोधिसत्वयान वा महायान हो ।

# बुद्धक्षेत्रपरिशोधन

बोधिसत्वहरूले यही पृथ्वीमा मात्र आफ्नो क्षेत्र मान्ने गर्दैनन् । अरु लोकधातुहरूमा पनि मेरो लोकधातु होउन् र ती लोकधातुहरूमा मैले धर्म प्रचार गर्नेछु भन्ने प्रणिधान गरेका हुन्छन् । यसरी बोधिसत्वहरूले आफ्नो क्षेत्र तयार पार्नुलाई बुद्धक्षेत्र परिशोधन भनिन्छ ।

# बोधिसत्वाभिज्ञा

ऋद्धि (अलौकिक सिद्धि) दिव्य श्रोत्र, परचित्त ज्ञान, पूर्वेनिवास च्युत्युत्पादज्ञान, आस्रवक्षयज्ञानलाई अभिज्ञा भनिन्छ।

# सर्वाकारज्ञताज्ञान

अनुत्पादज्ञानद्वारा आकाश जस्तै अनन्त अविछिन्न हित गर्ने गुणले युक्त प्राणीहरूको वासनालाई निर्मूल गर्ने ज्ञानलाई सर्वाकारज्ञताज्ञान भनिन्छ।

# वासनानुसन्धि क्लेश

क्लेश प्रहीण (नाश) भइसकेको व्यक्तिमा पनि क्लेश प्रहीण नभएको जस्तो चेष्टा देखिनुलाई वासनानुसन्धि क्लेश भनिन्छ। यो क्लेश वासना बुद्धमा नहुने हुनाले समुद्घात क्लेश वासन बुद्ध भनिन्छ।

# आयुसंम्पद

निरोगी भई परोपकारमा संलग्न गुणले युक्त आयुलाई नै आयुसम्पद भनिन्छ।

# सद्धर्मस्थिति

बुद्ध उत्पन्न भए पनि बुद्ध अनुत्पन्न भए पनि संसारका सारा धर्म (बस्तु)को धर्मता (नियम) स्थिर नै रहेको हुन्छ। यसलाई सद्धर्मस्थिनि भनिन्छ।

